पशुपति छापाखाना,

सगरमाथा अञ्चल ने० छात्र परिवार वाराणसीको

# — प्रथमोपहार —

## कविता संगालो




सम्पादक मण्डल:—

गौरीप्रसाद उपाध्याय रेग्मी
भवकृष्ण शास्त्री ढकाल
बोधराज काफ्ले
गोपालप्रसाद सुवेदी



मूल्य ७५ पैसा नेपाली
भा. रु ५० न.पै.



पशुपति-छापाखाना,

# उत्साह जागा रहोस्,

हतोत्साह, कंजोरी,
लालसा, आन नीचता,
दुश्मनी, फुट, वेमेल,
झमेला, त्रास औ शंका,

वैमनस्य मनुष्यमा,
भरेको पृथ्वी डल्लोमा,
टिक्दैन कुनै वस्तु,
परिवर्तनशील विश्वमा।

तसर्थ–देशको हित,
गर्ने हाम्रो इच्छा वढोस्,
विर्सी कालो कपट् मैलो,
छाती हाम्रो ठुलो वनोस्,

नेपाली र नेपालको,
भविष्य फलोस् फुलोस्,
देश संझी सधैं……
उत्साह जागा रहोस्,

। एम० वी० वी० शाह ।

## ( शुभ सन्देश )

अरुण उपानै रत्न भएको, हिमकण निर्मित मुकुट जडेको
गण्डकी कोशी मेची र काली, वग्छन् जसका पाउ पखाली
युगल नयन झैं चन्द्र र सूर्य, फर-फर गर्छन ज्योति अपूर्व
लहरा पहरा पोखरि ताल, उर्वर हरियो रम्य विशाल
उसमा सुषमाऽमृत भय छर्दै, रसिलो हँसिलो जनमुख भर्दै
वेंशी, लेकर काँठ, तराइ, विश्वभरी मा उच्च गराई
विश्व-शिखाले देश शिखायो प्रगति पथमा लीन गरेको
थोरै दिनमा देख्न मिलोस्, यत्ति छ मेरो शुभ सन्देश ॥ २ ॥

अग्निप्रसाद उपाध्याय वराल

धन्कुटा कुरुले

डाँडी गाँउ

## हिंड जाउँ

जनं कवि केशरी धर्मराज थापा

हिंडदाइ, निर्माण का ढोका उघारेर,
हृदयको डढ लोमा आशा उमारेर।

तिमी हिंड्यौ विहोशैमा बाटो विराएर,
तिमी बस्यौ अँधेरैमा बत्ती निभाएर।
यहाँ मन बलेकै छन् नयाँ किरण झारी,
त्यहाँ तिमी बोक्छौ किन अँध्याराको भारी।

हिंड बैनी, अँध्यारामा बत्ती जगाउन,
तिम्रै घर तगारीको बाटो बनाउन।

हिमालय का जिन्दगीको गीत सुसेलौंला,
नेपालका बसन्तको कोइली चरी हौंला।
मेची बाट मूल बाटो काली पुर्‍याऔंला,
एक्कै छिन्मा कोसी, सादी, कर्नाली नाघौंला

हिंड, दिदी, आज त्यस्तो माला गुथाउन,
छरिएर पोखिएका बन्धु जुटाउन।

कहाँ हिड्छयौ सिन्दूरको छारो उडाएर,
आफू हिंड्ने बाटो मनकै वनमा लुकाएर।
तर्सिएर हिंडे पनि बाटो भुल्नु छैन,
सपनाको जिन्दगानी झर्ने फुल्ने हैन ?

हिंड भाइ, सिर्जनका मूल फुटाउन,
छहरा र पहरा का फूल फूलाउन।

तिम्रै रातो रगतले झल्किएका चूली,
पृथिवी को नाप महाँ हाम्रै आँमा ठूली।
यो गूफामा बस्ने धौता हाम्रै मनका पाले,
लथालिङ्ग, भताभुङ्ग बाटो सज्न थाले।

हिंड तिम्रो राजमार्ग रुन्छ तगारीमा,
हिरा, मोती, सुन, चाँदी तिम्रै हियारीमा।

रूदा रूँदै जिन्दगीका विते स्वर्ण बेला,
तिमी भयौ टाढा-टाढा हामी भयौं हेला।
समयको पखेटा ले छोप्छ हामीलाई,
अमृत को घडा हाम्रो खान्छ अर्कै आई!

हिंडौं एक कोरि, मूल बाटो खनाउँदै,
सुन्दरी ले बनेकी छ रूप लुकाउँदै।

आफ्नै चन्द्र, सूर्य, तारा, आफ्नै ताल-खोला,
बिराँनकाँ बनेकाछन् दुःख पाउने चोला।
आफून्तमा आफ्नै हौला दुःख बिलाइ जाला,
हामीलाइ भविष्यले लाउला फूलका माला।

हिंड, हिंड आफ्नो माइले स्वर्ग पुऱ्याउँदै,
नेपालीले हिंड्ने मूल बाटो खुलाउँदै।

## सगरमाथा

— प्रो० डिल्लीराम तिमसिना —

अनुपम, अगम्य सौम्यशिखर
नेपालीको कीर्तिस्तम्भ
सगरसम्म गजधम्म
यसले आफ्नू शिर नुहाउनुपर्दैन
बादल लोकलाई यूसले काखी च्याप्छ
आफ्नू उच्च व्यक्तित्वले सबैको शिर नुहाउँछ
यो उदात्त विचार र कल्पनाको मुहान हो
यहाँको सेताम्मे हिउं पग्लिन्छ सगरमाथा घट्तैन
तुषारो थपिन्छ सगरमाथा बढ्दैन
यसमाथि विजय चाहने पराजित हुन्छन्
स्वयं लज्जित र विलीन भएर शिर निहुराउँछन्
'देहली दीप न्याय' लाउने
धृष्टता गर्ने गर्दै रहून्
नेपालको शिरपेच
अनादि-अनन्त अटल यो मुकुट किन टेढ्‌र

यसलाई त्यस्तै शक्ति प्राप्त छ
यो डगमगाऊँदैन
विश्वलाई यसले च्याउँछ
दुनियाँको मुटु छामेर ह्याउ बुझेर
यसले कुलो सौभयाउँछ
मौन रहेर पनि न्याय केलाउंछ
यो कामधेनु
नेपालको स्नेहले पग्लन्छ-अमृत बर्षाउंछ
दूधकोशी, सुनकोशी, तामाकोशी
सातै कोशीको धारो वहाउँछ
यो सगरमाथा हो
यसमाथि सगर छ-खालीसगर
यसलाई कसैले थिच्तैन
तल्ला सगरले यसलाई ऊँभो च्याउँछ
माथिल्ला सगरले यसको माथा चुम्छ
कोल्टो संसारलाई डाही लाउँछ
नेपाललाई माइल लाउँछ
सगरमाथाको फेदीमा टुसाएको
नेपाली सभ्यता, संस्कृति, साहित्य
र इतिहासको विरुवाले पनि
'सगरमाथा' मैं सम्बर्धन पाउँछ
संसारले बुझेको छ
'सगरमाथा' को कति ठूलो ह्याउ र
कति धेरै भाउछ ।

# : किन यस्तो ?

भवकृष्ण शास्त्री ढकाल ( पूर्व ३ नं० दोर्पा )

जोरि पारि राकेट युग का हाँमी किन बसेका बिचमा
उज्यालो भो उठौं साँथी बास्यो घडी चरो,
सगरमाथा शिखर को इज्जत राख्न पर्‍यो ।
युवक हो ! उठ सारा विहाँन भो अब,
तेसै बस्ने बेला छैन लम्कौ हाँमी सब ॥

जोरि पारि ---- ----

मेची देखी काली सम्म यौटै हाँम्रो जाति,
देश प्रति कर्तव्य छ हाँमी सबै माथि ।
काम चोर भईकन बस्नु हुँदैहुन्न,
नेपाली को शान मान छोडन् हुँदैहुन्न ॥

जोरि पारि -------

अकाशमा सूर्य चन्द्र उदाउदो सम्म,
हृदयका आशा तन्तु न चुँडिडा सम्म ।
लक्ष्य आफ्नु हाँमी मिलि पुरागर्न पर्छ,
नत्र भने मातृ भूको ठूलो श्राप पर्छ ॥

जोरि पारि -------

झल मल नेपालमा बत्ति बालिं दिउला,
सगरमाथा चुचुरालाई माला लगाइ दिउँला ।
हाँम्री आमा रोएकी छन्त आँसु पुन्छी दिउँला,
अनि मात्र सुख संगहाँमी शान्ति लिंउला ॥
जोरि पारि राकेट युगका हाँमी किन बसेका बिंचमा

# तरङ्ग

गौरीप्रसाद उपाध्याय रेग्मी (पूर्व ३ नं० शाखा कुभिण्डे)

उड़ेको चरो बसेको आफ्नु गुड़लोई संझन्छ,
उड़ेर गयो कहिले आउछ गुड़ले के भन्छ !
म फूल भए झुम्मिने थिए भुमरा हजार,
हीरामैं भए चुम्कने थियो बिक्री को बजार ॥

( १ )

सुकेको "पुरै" हंसले जस्तो साथीले छोडेको
काठको टुक्रा शरीर प्राण लाहाले जोड़े को।
यो ग्रीष्मऋतु त्यो काकाकुल के गर्नु प्यासले ?
बाचेको होला त्यो वर्षा फेरी आउने आशले ॥

( २ )

मनमा उठे तहवतह भावना हजार
स्मृतिले भन्छमात्र तं एक जगत बजार।
व्याधाको पाश फुकाई सास राखन पाए को,
भौतिक वाद अध्यात्मतिर लम्कन आएको ॥

( ३ )

यो सह भाव छोडेर बरु अध्यात्म चिन्तन,
गरे क्यै होला पुण्यकि भनि मान्दछ योमन।
आधार मेरो वेदान्त होला "साहित्य" छाड़ेर,
दुःख र सुख मनका भाव त्यो भाव लाघेर

( ४ )

गुणको हुन्छ गुणिमा भाव गुणीको गुणमा,
"यो सारा संसार दुःखको खेल" मन छ धनमा।

( ४ )

लोभका पोका दाजु र आमा बान्धव जहान,
निस्वार्थ भए निःस्वार्थ तामा "त्याग" छ महान ।।

( ५ )

आकार विना साकार हुँने यो अन्धकारमा
खिलेन फूल बलेन ज्योति "याचना" भरमा ।
म कवि भए कल्पना गर्थें नन्दन वनको,
वियोगी भए प्रकट गर्थें यो दुःख मनको ।।

( ६ )

निराश मेरो जीवन हवोस् ईश्वर समान,
"जोडे र हात माग्छु म भिक्षा पाउँ म वर्दान,
तीलमा भन्दा तोरी मा ज्यादा थदाम तेवर,
मनमा भए त्योल बालव को पेलन सक्छ र !

( ७ )

दुनीयाँ सारा म्माथी गरोस् नैष्ठूर्य महान,
चम्कँदा ज्योति तेहीम माग्छु आफू मा वर्दान ।
अमीलो घुस्दा मर्दछन् कीरा घाउका भनेर,
को गर्न सक्ला ! कुकर्म त्यत्तो छाती यो चिरेर।।

( ८

मानिन्छ कण आत्मा मा हेरे यो विश्वविशाल
सम्भियो जति फुक्नछ गाँठो मुटुको कराल ।
देखेर धुवाँ रहे छ आगो पर्वतबीचमा,
भनेभैं गरुन् त्यो अनुमान पाठक . यसमा ।।

———

# 'सगरमाथा'

## — भानुभक्त पोखरेल —

ठूला. दीर्घ भुजा फिंजाइ सजिलै मेचीर कालीतक
ढाकी उत्तरमा सदा अटल छन् नेपाल-संरक्षक
जस्का अन्तरबाट दूध सुनका कोशीहरू निस्किए
निस्कछन् सुकिला विचार यसरी मस्तिष्क सङ्लो भए ॥ १ ॥

सेत, उच्चहिमाल-भाल चुचुरा पर्ली, रसाई रहुन्
लीला-लोल लता हिल्लेर रासलो हावा वहाई रहुन्
यो वक्षस्थल काँत्रिएन काहिल्यै जसको सहारालिई
मेरो राष्ट्र ध्वजा झुकेन काहिल्यै जस्को इशारा मिली ॥ २ ॥

जस्को छैन यहाँ जरा मरण नै खाएर सञ्जीवनी
हाँसेको छ सधैं जवान मुहुडा ए उच्चताका धनी!
पाछौं फर्फर चन्द्र सूर्य शिरमा मेरो ध्वजा हो भनी
तिम्रै शीतल श्वासबाट जगमा वर्षिन्छ कादम्बिनी ॥ ३ ॥

यो मेरो दरबार हो म रमिता हेर्छु धुरीमा चढी
मैले आफ्नु घरै बसी बसि सकें संसार जम्मै पढी
कैले गाउँछु खेल्दछु लहडले कोट्याउँछ चन्द्रमा
खाजा खान्छु यसो म चोभि हिउँका चोइलो
चिनी दूधमा ॥ ५ ॥

दूँमाएर मलाइ नित्य जसको मुस्कान-सौदामिनी
बाटो भुल्न दिंदैन जो प्रगतिको मेरो उज्यालो बनी
जस्का पावन प्रेरणा अणुहरू मेरा नसाभित्र छन्
राखी काख उनै उँभोतिर सधैं हेर्ने ईशारा दिउन् ॥ ६ ॥

# ❀उज्यालो भयो❀

लक्ष्मी कान्त "प्रकाश", पं० गुल्मी ( नेपाल )

विद्या दीपक झैं प्रकाश गरने अज्ञान को स्थान मा
मेटी झट्पट अन्धकार दगुरी आयो रसीलो दिन।
बास्यो कुक्कुट स्वर ले सुजन हो ? जागृति को भावमा,
संझी उच्च विचार लौ अघि बढौं जागेर संसारमा ॥१॥

हिड्यो काग हुंदै अगाध नभमा सन्देशको वाहक,
मानो सूचक हो प्रकाश गरने श्रीसूर्य को पालक।
गर्दै शब्द चराहरू सब हिंडे आकाश को माझले,
थिए सूचकनै अहो मनुज का हिड्थे ति सन्देश ले ॥२॥

लागे धाम हिमाल का शिखरमा टल्क्यो भई निर्मल,
उज्यालो हुँनगो उठौं अब छिटो छोडेर यो निर्बल।
चन्द्रैलोक पुगे कुति अरु पनि० आकाश को मार्गमा,
हिड्दछन् अझ छैन लाज मनमा सुत्छौं कति [illegible] ॥३॥

मानव के तिमी होइ नौ र अहिले आनन्द मा लेट्त छौ,
यस्तै चाल लियी हट्यौं पछि कति केहो अझैं बस्दछौ।
थालौं काम छिटो त गर्न मनले राखेर सद्भावना,
बढ्ला निश्चय देश उज्ज्वल भई पूरा हुँदै कामना ॥४॥

निस्के सूर्य हुंदै अगाध भवमा अलस्यका नाशक,
आए ज्योतिहरू सफा दिन लियी जागौंन भै चिन्तक।
संसार को पथमा त जीवन अति कूदी रहेको छयो,
छाडी निर्बल चटट ख्याल गर्दै जागौं उज्यालो भयो ॥५॥

## ❀ मेरो गीत ❀

**ले० लाटो सार्थी**

गाजालु आँखा मा
मायालु राग छ,
पीरती लगाइ छाडौं ला।
भट् भटे मुटु मा ..
लुके को गीत छ,
माद लु बाजाइ छाडौं ला।

कल्ले हो कल्ले, राति मा मेरो, सपनी जगायो,
डाँडा मा वसी, तिन वाचा कसी, पिरति लगायो,
विउँझेर हेरें, वरि र परि, कै पनि थिएन
योमन चोर्ने कौरेछ मेरो नखोजि भएन—गाजलु आखाँ मा—

कम्मर त्यस्को वारुले राम्रो, लरक कपाल,
मुसुक्क हाँस्दा, देखिन्छ दाँत; झल्कने हिमाल,
वर्षा को भल, सलल वग्छ, रोकिन्न रोकेर,
न खेर हाल, यो वैंस पेरी आउन्न फर्केर,
गाजलु आँखाँ मा—

चौतारी माथी, पीपल वर, हर्लक्क वढेको,
वैंस को छाया, उति मा उति, सर्लक्क चढेको,
आकाश भरी, नौलाख तारा, गनेर सकिन्न,
मन को कुरा मनै ले बुझ्छ, भनेर सकिन्न,
गाजलु आँखाँ म—

हेरियो वारी, तोरी मा फुल्दा, पहेलै देखियो,
राम्रो मा राम्रो वैंस को लाली, मुखमा देखियो,
त्यै फुल हेरी, त्यै मुख हेरी. सारङ्गी रेटुँला
मिर्मिरे घाम लेखको ठम्म, गोठ मा भेटुँला,
गाजलु आँखा मा—

## ❀ गइन आज ❀

देव मणि न्यौपाने
पूर्व ४ नं० सिक्तेल गोगने

कल को पानी कलै मा छोडेर गइन् आज अँध्यारो पारेर।
वरी परी फूल रोपि फुल्ले मनो हर
अटालि र कोटे वारी थिए भर पुर
गुलावर चमेली का माला हरु गुँथी
वसे किती झ्याल महाँ गइन आज रूँदं
कल को पानी कलै मा छोडेर गइन उनी अँध्यारो पारेर।
फूल माला धूप वत्ति अरू सामान ले
पञ्च देव पूजित थिए उन्का काम कोग्ले
वाणी उन्को भनौं भने कोइली लाइ भुल्ने
सिप उन्को संझौं भने खुव रूनु पर्ने
कल को पानी ............ .......
घरकाती परिवार साथी सगीहरू
धुरू धुरु रूवाएर गइन म के हेरू
सबै लाई चटक्क छोडेर गइन आज सातडाँढा काटेर।

## ❀ मेरो जीवनमा ❀

नगेश निरौला 'कृण'

अमृतमय मुसकान भरिदेउ
मेरो जीवनमा
म हुँ एक अकेला यात्री
पथ विर्सी सकेको जङ्गल ॥ १ ॥
दुनियाँलाई छोडी बढेको
पाउँन तिम्रो स्नेह

अमृतमय मुसकान भरिदेउ
मेरो जीवनमा ॥ २ ॥
चारैतिर छन् द्वेष र ईर्ष्या
काँढा जस्तै उम्री रहेका
काँढाका नै बीच गुलाब
फुल्दछ पायी तिम्रो प्रेम ॥ ३ ॥
म पनि आशा गर्दै बढने
पाउँन तिम्रो प्रेम
भरिदेउ मेरो जीवनम ॥ ४ ॥
प्रकृतिलाई शोभा दियौ
मानवलाई बुद्धि
तिम्रै शक्ति पायी आज
सेवा गर्छन् सूर्य र चन्द्र ॥ ५ ॥
त्यस्तै पीडित जनको सेवा
गर्ने शक्ति आज देउ
मेरो जीवनमा
अमृतमय मुसकान भरिदेउ
मेरो जीवनमा ॥ ५ ॥

## टाइप टेबल

### एस० रमण शर्मा

लेखिएको दिलको टलपल जलले लेखिएको अमित मनोहर
नीला अक्षर सौम्य समीहा, सेतो कागज हृदय छ सुन्दर
गुढ ढलेको मधुर भविष्य, कल्पनाको मृदु भित्तामा–
टाँसि दिएको, टायप टेबल भन्छिन छैन म रित्तामा ।
सब मानवको जीवनपथमा मेरो वचन अजस्र-प्रसाद

साथी होला प्रेम खुलेको टारिदेला दुःख विषाद
मेरै भरमा विश्व अड़ेको ईश्वर मेरो मित्र समान
मेरो आज्ञा पालन गर्दा सानो मान्छे हुन्छ महान !
भन्छु न हरदम गर-गर काम चल चल रे हेर म चल्छु !
आँगन माथि जुनकिरी होइन तारासरी भै झल्कन्छु
मेरो चितवन मीठो अमृत पिउन लगाउ शोभनवानी,
सभव, श्रद्धासाथ पियेमा पृथिवी तिम्री होलिन रानी
लौन समाउ उम्कन लाग्यो समय मणिको चिड़िया तुल्य !
तिम्रो जीवन जीवन भन्छौ त्यस भन्दा अझ यो छ अमूल्य
ब्रह्मा झुक्नछ मेरो पदमा जसले यस्तो विश्व बनायो
मानव, मेरै अमर कृपाले तिम्रो हृदय अपार बनायो ।
भावुकताको सत्र अक्षरमा अझ दृढ़ताको रङ्ग लगाउ
चञ्चल मनको प्याँख उखेली खुरु खुरु बाटा माथि हिंड़ाउ
आँखा चिम्ली स्वर्ग न जाउ हेर वसेरै काँडा घारी
सत्य, उज्यालो तिम्रो दिन हो आउँछ अहिल्यै रात ऊधारी ।
हेर मलाई दिन्छु वरदान "यस्ता विश्व अनन्त बनाउ
मानव, भोली यहीं पृथिवीमा अजर अमर शुभ जीवन पाउ
नील गगनमा आशा रोपी चन्द्रिकामा फूल फुलाऊ
स्वर्ग निचोरी मल हालेर मानवता को रत्न फलाउ"
तर भन्नु छ यो बाँकी—
सत्य सङ्कल्पकी छोरी अटल विश्वास की रानी
मलाइ टाँसनु भित्र स्मरण गर्नु कुरा जान्ने
कहीं कोरेर कागजमा न टाँसनु खाली भित्तामा!
नत्र ए चञ्चल मान्छे ! म पारिदिन्छु रित्तामा !!

—०—

# केही गुनासो

( आचार्य शेषराज शर्मा )

सताइएका जन को न रक्षण,
दुर्दान्त को हुन्छ जहाँ न शासन ।
जस्लेछ खाली निज-अर्थ-साधन,
त्यहाँ छ के शक्ति प्रशस्ति भाजन ॥ १ ॥
अशिक्षित छन् जन वर्ग सन्तत,
हिताऽहित ज्ञान न पाइ वञ्चित ।
प्रचार को नै भरमा परीकन,
पाण्डित्य को अर्थ त्यहाँ छ के भन ॥ २ ॥
वरी परी भै पनि घेध्रे निर्धन
छ स्वार्थ कै साधन मा जहाँ धन ।
आखीर मा भै अनलाऽऽदि भाजन
त्यो अर्थ हो खालि अनर्थ साधन ॥ ३ ॥
रुँदै रहन्दे गृहिणी निरन्तर
निर्वासिता भै घर बाट बाहिर ।
स्वामी त्यसै को छ तपस्विनामक
भै सगृहीता पति त्यो छ निर्थक ॥ ४ ॥
नरत्व विद्या जस बाट पाउँदा
कमाउँदो ओजसले सुसंपद ।
त्यैं पुत्र छोडी पितृ पाद सेवन
गर्न भयो हा ? गृहिणी पदाऽर्चन ॥ ५ ॥
स्व धर्म को संस्कृति को जहाँ रति
ममत्व देखिन्न न केही सत्कृति ।
स्वमातृ भाषा छ जहाँ हताऽऽदरा
उही धरा भो गुण-पूर्ण उर्वरा ॥ ६ ॥

जुन पुत्र को लागि भएर सुव्रता
पाली प्रसू त्यै सुत ले उपेक्षिता
भई बुहारी जन बाट शासिता
भई रहन्छे बुढिया व्यथान्वित ॥७॥

विद्या, तपस्या र चरित्र ले युत
सम्पन्न ले छन् तिनहूँ उपेक्षित ।
जो छन् धनी वा परि सेवनाऽन्वित
पात्रत्वको बुद्धि वहाँ छ सन्तत ॥८॥

जो पल्लवग्राहिं बुधत्व भाजन
भएर विज्ञापन आदि साधन ।
तयार गर्छन्, कृति वर्ग संस्तुत
तिनै रहन्छन् जन मान्य विश्रुत ॥९॥

स्वबन्धुमा दृष्ट छ दीनहीनता
दयालुता कृत्य उहाँ कता कता ।
अबन्धुनै छन् करुणाऽऽदिभाजन
यस्तो पनि देखिनगो निकेतन ॥१०॥

## ❀ नेपाली ❀

### हरिवंश शर्मा

### ( पूर्व ४ नं० सिक्तेल गोगने )

गर्छौं हाँमी मातृभूमिको, सेवा तन, मन, धन दिई सारा,
राख्छौं सबले अवसर यही हो, माता महीको शान [illegible] ।

( १ )

रक्त वहाई प्राण गवाई, लाँडछौं आगो अरि पुरलाई,
डरने भन्ने शब्द बोलने, छैनौं आज युवक समाजी ।

( २ )

खुकुरी आफ्नु चम-चम्क पारी, अधिसर्नेछौं वीर नेपाली,
अनि पुग्ने छौं अरिका घरमा, पसिकन याख्नौं चटनी, रणमा

( ३ )

रिपुको चटनी खाइ मजामा, कीर्ति फिजाई घुम्छौ जगमा,
प्राण वियोगी तनय मुमाका, गर्छौं रक्षा वीर लडाका ॥

( ४ )

युवक समाज ज्योति जगाँउने, नवयुग रुपी बीज उमार्ने,
तन, मन, धनले देश सुधार्ने, नेपाली हौं विश्व सिंगार्ने ।

( ५ )

# ज्योति

## परशुराम 'दाहाल'

पूर्व ३ नं० हलेसी – काभ्रे

सब कल्मथ नासि दिवाकर भैं,
अधि कोमल शान्ति कला भरदै ।
मणि-तुल्य बनी भवमा यिनको,
छवि तिमिर-तिमिर लौ छरियो ॥ १ ॥
जनका रान मा मकरन्द सुधा,
रस वृष्टि अनेक सुरम्य हुँदा ।
कति निर्मल ज्योति विकास भयो,
अनि रावण पाप विनाश भयो ॥ २ ॥
सब मानव उन्नतिका पथमा,
रथ हाँकि चले रथि भैं जगमा ।

पृथिवी भर मा जति भारथिए,
सब शेष भई अब दूर गये ॥ ३ ॥
अब ती जननी झल मल्ल भइन्,
अतिरम्य उनै सुर भूमि थिइन् ।
दिन-रात फुल्यो सुरलोक बन्यो,
फल फल्छनि आजी प्रकाश अहो ? ॥ ४ ॥
वरदान मिल्यो कमलै चिचमा,
अलि-वृन्द झुम्यो निखिलै फुलमा ।
रस-पूर्ण छ जो जल मा थल मा;
लिनु पर्छ अवश्य यसै पल मा ॥ ५ ॥

## "आशा"

नारायण प्रसाद लंसाल
पं० १ नं० श्रादिङ्ग 'पाल्पा'

संसारमा सतत प्रेरक होस्तँ आश
गर्छस्तँ प्राणिहरुको सजिलो विनाश ।
बन्छस्तँ मूर्ति भयको कहिले अचम्म
[illegible]स्तँ साधुहरुलाई गराई दङ्ग ॥
(१,

बन्छस्तँ उर्वशी युवाहरुको अगाडी
विद्या वनी तँ सब बालकको अगाडी ।
द्रव्यादि भै तँ दुःखिलाई सताउँदोछस्
कार्यादिबाट नत भार विसाउँदोछस् ॥
(२)

तृष्णा छुटाई अनी स्वार्थ त्यजी बसेका
संसारको दुःखदभोग पनि त्यजेका।
शोकाग्निमा र विरही जलमा डुबेका
बाँकी छ अन्त, तर विश्व भुली सकेका ॥

( ३ )

चिन्का अगाडि तँ विलासक यन्त्र बन्छस्
जादू स्वरूप तँ लिएर सुपुत्र हुन्छस्।
जानेर यो सब चरित्र सदा निराश
होऔं सबै, अनि भरौं जगमा मिठास ॥

( ४ )

## "तारो"

केदार नाथ उपाध्याय नेपाल
( पूर्व ३ नं० रावाहाँउचूर )

योजनले मानव पेह लियो
पहिले कुन रुप यस्तो थियो;
तर—विधातु ले निर्मित यो देह ?
अतिकष्ट दायक भन्छन् म——।
उनैका अन्तः करण को एक बूँद हूँ
प निकलेको यो भवमा
विश्वबिशाल छ येता उति मन छटपटाउन थालें'
"यसको उपाय के छत ? भन्दा पौटा सानु रुप"
शैशव-लता हुँदा हुदै त्यो च्यैं—— छोडिये छ,
अनि यो भवको यौटा मानव कहाँ ? दगुर्द छ,
आदि अन्त कतै छैन एकातिर बाट बोलाउ छ.

म सुनेर झसंग हुन थालें,
भविष्यको उन्नति ले -- भने पछि शाहा पाएँ
अनि साानु छोटो घुमेको किन भनेर,
कसै ले सोधे उत्तर येहि दिन्छु,
नेपाल तारो भनी ॥

—०—

## मनप्रति

### विष्णुप्रसाद ढुङ्गाना ( पूर्व ३ नं० काकुवासा )

मन हे कतिवार भुलीरहिछस्, नव सुन्दर वाल रुचाउदछस्,
कति का नगिचै गई नाचन मा, मतिछैन कदापि तँ पामर मा।
चपला सरिका मन मोद छटा० सब सुन्दरि का नवरङ्ग वुटा,
तिनका भई लोचन का वसमा कति केछ लिने तिनका सँग मा।
तित छन् ननिका वनिता अरूका मन ! केवल नाच्न तलाईमजा,
भवका वनिता हरूमा रङ्गिदा, रसीका भवँरी सरिता वनिदा।
अझ त्यो मन मञ्जुलता मिलदा मन हे! तँत नाचि भइस् रसिका,
न वसौं न वसौं वरू जाउँ कता, भनि काम महाँ भई चञ्चलता।
अरू ताई गराई दिने विपता तँसरी कपटी अरू को छ वता ?
रसि ला, चपला सरिका छरिता, रस पुष्प सरि तिन ले वनिदा।
भ्रमरो वनि जानत खोज्छ वरा रसाका वस मा वलि हुंछ अहा !!
अवता न विता अघि का सरिता, मन रे ? मन केहि मलाई वता ?
किन है यसरी भई चञ्चल मन् तँ सरी डुलने अरू कौन हुनन्,
कवि का कविता सरिता सरि छन् सव कोमलता पनिता भरि छन्।
उसमा सरि का रस मञ्जु हुनेन् लिइ धैर्य सदा अवं मौन तँ वन,
उस कै रस पान लिने वनि भन् अजरामर भै उडिना न गगन्

## "सन्देश"

### अम्बिका देवी भारद्वाज

वनमा उड्ने ए रानी चरी ! विदेश जाउन,
रुँदैछ तिम्री 'जीवनकी साथी' भनेर आउन।
यो मेरो मुहार आदर्श-छाया झल्केको झल्झली,
कलीलो यौवन पायेर हो क्या ! बढ़ेको सल्सली।
'चटक छाड़ी विदेश-बस्ता मन हुन्छ धुरूरू',
गीत म गाऊ सन्देश मेरो उड़ेर हुरूरू।
'सल्लेरि डाँडा सरर गर्ने ए मन्द पवन !
'क्रन्दन' मेरो सुनाई देउ आउछन् जीवन।
सन्सन गरी प्यारा को मन्मा कल्पना बढ़ाऊ,
भावना मेरो लगेर उन्को हृदय भराऊ।
'प्राणेश ! मेरा विरह ज्वाला बढ़्दैछ दन्दन,
शरीर मेरो चीता, यो मन बल्दैछ झन्झन।
आकाशमा उड्ने ए कालो बादल ! यो मेरो पुकार,
सुनाई वर्षा लाग्यो रे भन्दै संझाउ हजार !
'संसार माया प्रकृति छाया' जान्ला यो कसले,
कमल सरी-हृदय संगै जन्मिन्छ जसले।

धनकुटा, चौविसे तेनुवा

## नस्वरता

कमलिनी-दलका बिचको जल।
जसरी हुन्छ सदा अति चञ्चल॥
ठिक उही सरि जीवनको चल।
चुरिफुरी कति यो टिकने छ र॥१॥
धन अलक्ष्य छ मित्र असंख्य छन्।
बल छ नोकर चाकर खूब छन्॥
तरुण सुन्दर मस्त उमेर छ।
म सरि छैन कुनै सब दम्म छ॥२॥
यसरि गर्व हरे! नगरे कतै।
सब विचार गरे छर के कठै!
प्रबलकाल जसै अघि सर्दछ।
न गनि यो छिनमा सब हर्दछ॥३॥
अघि वड़ा नगरादि थिए जहाँ।
अब चिनोतक छैन भने यहाँ॥
स्थिर रहेछ कहाँतक लौ भन।
सकल यो जगतै मनमा गुन॥४॥
युवति छन् मनमोहक मित्र छन्।
असल बान्धव नोकर वर्ग छन्॥
चपल घोटक हात्ति हज्जार छन्।
नयन चिम्लि लिदा तर लुप्त छन्॥५॥
यति भयो अबता यति जोड्ला।
सब रिकॉर्डहरू सब तोड्ला॥
म वढुला त भने नभइ कम।
गड्क चूर भयो वसिगो दम॥६॥

डॉ० गोविन्द सुवेदी

## उद्बोधन

सुरेश रेग्मी ( स्वामी कृष्णानन्द ) पु० ४ नं० मीर्कोट

यो प्रकृतिको फूलबारी हो सजाऔं साथी हो
यो ईश्वर को वरदान हो पालौन साथी हो ॥
यो मोती कोहो अमूल्य टुक्रो राखौन साथी हो ?
एसैमा हाम्रो लुकेको गौरव छिपेछ हाम्रोमान

१

यो अमर लताहो रक्षा गरौन साथी हो ?
मानवताको बिगुल बजाई मनुष्य चिनौं साथीहो ।
धेरै दिन हाम्रो बितेर गयो अब छैन सुत्ने वेला
उठौं र छीटो चाँडैगरी आउ जाँउ हाँमो मेला ॥

२

स्वान आयो केले-केले हाँमीलाई ऐले
देश का वासी दाजु र भाई दिदी बैनी सबै
मिली जुली नेपाल-उद्यान लाई सजाँउ राम्रोगरी
आलस्य छोडी जुरुक्क उठी खड़ाहौं साथी हो ?

३

## त्यो शून्यको चोटमा

पु० ३ नं० सुम्नाम खुरहरी योगराज काफ्ले

धिर्सिदिन मुसुक्क हे प्रियतमा ! ती कल्पनाका कला ।
हस्छयौ बादल पारमा चिरि-चिरी कारुण्य ती कोमला ॥
फुल्छन् फूल वसन्तको प्रकृतिमा हेमन्तमा झर्दछन् ।
एकैनास रहन्न 'प्रेम-कविता, के भन्नु हो ? जान्दछयौ ॥

॥१॥

हो हाम्रो विधि शुष्क-जीवन थियो फक्यौं फुली प्रेममा !
आँके ज्वाल म फुटनगो सकसले रावेर यो संभना ॥

संम्झ्यौ संझनता परन्तु जडता आवेगको वेलना।
त्यो संघर्ष मिठो चलेर उरमा छाया सरी शीतमा ?
॥२॥
ज्झोक्कीएर हुँदैन बादल पनी फारिन्छ कालोष्णमा।
रोई चित्त बुझिन्न न्याउल पनी रुँदैन हर्कालमा॥
हाम्रो प्रेम थियो खुसी दिल थियो आँफै हँस्यो हट्‌दछ।
औंसीमा शशि हुन्न यो प्रकृतिमा विस्माद के हर्षछ ?
॥३॥
पैल्हे पावन, शान्त, सत्य, कृतिको आलो थियो चेतन।
आयौ प्रेम भन्यौ, गयौ पर सर्‌यौ, त्यो धन्य हो जीवन
तिम्रो जीवन शुष्क छैन चिउला नै हाल्नुमा योग्यछ।
आम्पे आँधि भने सबै गिरदछन् के पुष्पमा स्पन्दछ ॥४॥
आँसू टलपल गेहमा स्मृति भरी मेरी हुंदी हौ त्यहाँ।
हेर्दीहौ परसम्म चिम्म नगरी वस्ती छँदी डीलमा॥
माला हात लिंदा गले कर हुनन् छाती सुक्यो हो वरा।
रूवा सोंमलको सरी उडदिहौ लाग्दी उच्चाठ् चेहरा ॥५॥
छेक्दोहो र शैल आखिर नजर् लागेर हा ! चक्कर।
घुम्दोहो फनफन्न त्यो भुमरिमा हाल्दै सुसेली पर॥
'कोहौ ¤ ! भन' प्रश्नको वन हूंदा हाँस्ता शशी व्योममा।
फिर्दीहौ घरमा अहो ! प्रलय झैं त्यो शून्यको चोटमा,
मेरो जीवन आँधिमा छ अहिले धूवाँ र यो मौसम।
हाँसो वा रूनुयो विरोध गनिने तर्साउँछन् संझन॥
मेरो नै पछि यी नदी झरदिछिन् हूंः हूंः गरी आत्तिदै।
लाग्छिन् टक्कर शैलको कुहिनुमा चिच्याउँछिन् हा ! कठै
तिम्रै विह्वल हुन् सबै वुजदथें एक्लोछु छाँया मनि।
संझे छाति चिरिन्छ चूर अहहा ! धिक्कार मेरो जुनी।
मेरो जीवन अन्त्यको धुकधुकी यो पत्र हो आखिरी।
रूनै यर्छ भने अहो ! जगतमा रोक्‍र सक्नी ! वेसरी॥

# म तेहिहूँ

कृष्णहरि उपाध्याय नेपाल ( पूर्व ३ नं० रावाह्नाँचुर )

अशुद्ध ब्रह्माण्ड म शुद्धछु सदा, अज्ञान सामान्य भएर गंकदा
शरीरलाई सब श्लोक संझने, म तेहिहूँ भान अनन्त झल्कने

१

शरीर अस्थिर बुझि–बुझि पनी, संझेर आफै कहिले धनि वनी
संसार मा मग्न भई मजा लिने, म तेहिहूं मूढ शरीर झल्कने।

२

यो पेट भर्दा सब ज्ञान नै पनि, चवाई, खाई मनमानिले भरी
अज्ञानले निश्चित क्यै न जानने, म तेहिहूं अन्धभएर वाँन्ने

३

स्त्री पुत्र पौत्रादि बटोलि साथमा, आनन्द शान्ति अनुभव गरीवरी
पश्चात् वसैले दुःखमा डुवाउने, म तेहिहूं कर्म कुनै न जानने।

४

परंपरा को कुन मार्ग हो त्यही, भुलेर वा संझिई संझिइ पनी
छोडेर दुर्मार्ग सफा गराउने, म तेहिहूं निर्मूल पुण्य पारने

५

यो मूर्तिलाई बलवान् वनाउँन, जोडेर धेरै पशुपक्षि साथमा
काटे र टुक्रा नगरी न छोडनें, म तेहिहूँ निर्भर देह संझने

६

# नेपालका वीर

गोपल प्रसाद सुवेदी
सप्तरी, डंराही फूलवडिया

तिम्रो छ कीर्ति जगतै भरि फैलिएको
नेपालका सपुत हो ! रणमा जितेको ।
संग्राममा बिजय प्राप्त गरेर भारी,
छौ सूर, वीर, बलिया र परोपकारी ॥१॥

बर्मा मलाय, इङ्लैड, अमेरिकाले,
जस्को सुकीर्ति गुण गाँउदछन्मजाले ।
सर्वत्र छौ तिमि प्रसिद्ध प्रचन्ड वीर,
जस्का अगाडि रिपुको मन भो अधीर ॥२॥

गोर्खाली वीर भनि देश विदेश सारा,
थर्कन्छ देख्न खुकुरी जसको सहारा॥
त्यस्ता तिमीहरू मिली सब दाजु-भाइ,
लौ उच्च पार अब यो निज देशलाई ॥३॥

तिम्रो सुकीर्ति जगतै भरि फैलियोस,
नेपाली हौं भनि ठुलो अभिमान होस ।
नेपालको सतत गौरव राख वीर,
संग्राम मा वन सधैं रण सूर-धीर ॥४॥

जाओ जहाँ पनि रही अभिमान साथै,
तिम्रो रहोस् जगतमा अति उच्च माथ ।
कैल्है नविर्स तर यो निज-देशलाई,
यस्को बढाउ महिमा मन-चित्तलाई ॥५॥

# फर्कि आउन

स्वामी रमेशानन्द

फर्की आउन प्रवासी भाइ मातृभूमि नेपाललाइ सम्झेर ।
डाँडा-काँड़ा कोदैँ-फोदैँ सुन्दर बाटो ल्याउँला,
डाँड़ा मुनि डाँडा माथिँ मोटरैमा जाउँला ।
मोठो मीठो सुशेलीमा नेपाल गीत गाँउला,
अनि मात्रै नेपालमा नेपालीपनआउला ।
फर्कि आउन प्रवासी० ...
बिजुली को झिली-मिली डाँडा काँडा माथि,
एकतार धीरता छन् नेपालीका साथी ।
नेपालैमा उद्योग धन्धा कारखाना खोल्ने,
नेपाली को आर्थिक वृद्धि कल्ले टाली टल्ने ।
फर्कि आउन० ...
भ्रष्टाचार अत्याचार सबै खतम पार्ने,
देश द्रोही नेतागिरि सबैले हो छोड्ने ।
गाली होइन नारा होइन गर्नु पर्छ काम,
राम्रो काम गरे देखिन् अनि मिल्छ नाम ।
विदेश तर्स्ने त्यसै बस्ने वेला अब छैन
मन्त्री पद नपाउँदैमा काम छोड्ने होइन ।
स्वार्थवश लोभिएर हुन्छन् सबै मित्र,
स्वार्थ पुरा नभयेमा हुन्छन् तिनै दुष्ट ।
फर्कि आउन प्रवासी०

# आशा विजयी छ

हेम राज 'कंडेल'
प० १ नं० ताल्ती

शक्तिर अस्तित्वको साथै
स्मृति को चित्रपट् बनाएर
देवत्व र अमरत्व को आभा झल्केझैं
अतीतको स्मृति र
वर्तमानको झन्जावातले परिपूर्ण
भविष्य कल्पना को
अथाह-पोखरी पारगर्नु भन्दा पैलेनै
शका उठेर महाँसागर बन्द छ,
तर पनि
यो मुक आशा
मानव विज्ञानको आड छोडेर पनि
विश्वले तिरष्कृत
शुष्कर द्रवोभूत हृदय लाई लिएर
लम्कदो छ।
यसमानै यस्को विजय चिन्ह झल्केको छ
यसैले, यो अवश्य विजयी छ।

## 'भञ्जाङ्ग,

विश्वप्रेम अधिकारी

एक्लो आफु हुन्नोस् तथापि पथमा लौरो सहारा लिई,
बाटामा बहुतै परोस् कठिन औ साथी कुनै त्यो लिई।
आफ्ना ती दुइटा अदृश्य सिडिमा राखेर खुट्टा शनै;
बाँधी हिम्मतको भरो बल सितै नाघेर जाऔंरर् सबै॥
(१)

भर्या-भर्या पानि परोस् चमक्क बिजुली गर्जेर चम्की रहोस् ;
ओर्लोस् बादल को मुनो टुकुलिई लत्र्यान्न लत्रोस् वरु ।
बाटो काटि हिंड्रोस् भुजङ्ग अहि त्यो जिभ्रो निकाल्दै तहाँ;
जाओस् निर्भयले शनैः पथिक त्यो अग्लो उ भञ्ज्याङ्गमा' ॥

( २ )

धुम्रावाट वलै अन्हेरन भनी ढुङ्गार ढेलाहरू;
पल्टाउन् सहसा गड्यङ्ग रिसले आएर भालूहरू ।
आफ्नो लक्ष न छोड़ि पिल्–पिल दियो बोकेर त्यो आत्मको;
जा ओध् भट्ट पछाड़ि गर्तहरू ती त्यागेर त्यो मार्गको ॥

३

चाहे शैल समान जङ्ग असिना वर्षुन् तड़ा-तड्गरी;
चाहे स्याँठ चलोस् उडाँउँछ सरी उल्टो तमासा गरी ।
चिप्लो होस् पथ त्यो लरक्क लरकी फुम्लुन् घुँडाते रनि;
जाओस् उफ्रि वुरुक वायु सरिभै उड्दै छ जो सन्सनी ॥

४

त्यो "भञ्जाङ्ग" हुँदैन क्वै वृक्षतमा एकाङ्गी व्यालादिको;
आ ! 'भञ्जाङ्ग' मिल्यो भनेर त्यसमा लम्पृथान्न होला र को ?
हाँगा औ लहरा समाति करले उक्लेर त्यो खुट्किलो;
जोगा ओस् सहसा पुगेर त्यसमा राम्रो छ त्या कोपिलो ॥

५

वुन्सन्नी, अथवा, भएँर, डुलुवा, वोक्सी र वाई अनि;
भाँकी औं वनका सवै भूतहरू कुर्लें र आउन् पनि ।
पन्छा ओस् सवलाई सभ्य संग त्यो वोके न काटीकन;
जाओस् भट्ट उषा लिएर संगमा छर्लङ्ग 'भञ्ज्याङ्गमा' ॥

६

( कविता संग्रह 'भञ्ज्याङ्ग' पाट )

# स्पन्दन र लुप्तनिश्वाश

ठाकुर प्रसाद शर्मा

यो जगतीको प्राङ्गणमा
निशाको लुप्त आभा लिएर
मेरो आत्माको श्वास छोडि
मेरै मनको विश्वास लिएर,
स्पन्दन को क्रन्दन
जीवन को अभिनन्दन
मेरै तृष्णाको उच्छ्वास लिएर
अन्तस्करणको आर्तदशामा,
संझनाको रुकावट पाएर,
मेरो जीवनको लुप्त निश्वास,
अधरामृत को गुप्त उच्छ्वासमा
लट्पटिएको छ,
छट्पुटिएको छ,
पारि जाने बाटो नपाएर
उषाको तिखो दिगुल मा,
तन्द्राको मिठो तान पाएर
आफ्नो छैन भन्दै मा,
पाएको आभास पाएर,
दुनियाँलाइ बिर्सि अब
सिन्दूरको धागो समात्दै
झुण्डिदै, बढि रहेको छ
आफैलाई देख्न नपाएर
अतीतको स्वर्ण प्रकाशमा,
बर्तमानको अन्ध कारले ढाकेर,
भविष्यको कल्पना गर्न न सकि,

छटपटिदैछ
छटपटिदै छ

मेरो मृत्युको स्पन्दन,
जीवनको लुप्त निश्वाश,
पारि जाने बाटो नपाएर-

प० १ नं० धादिङ् ताल्ति

# विपन्न-पथिक

ले० सोमराज "अभय" ढुंगेगारा ( सँखुवा-सभा )

(१) पथिक बिचारो भवमा जन्मी, जीवन रथ यो हाँकी ।
शैशव-वयकै सरि अझ पनि त्यो खेल्दछ आफ्नो झाँकी ॥
कहिले संपति सुखमा उफ्री; दुःख परेमा कातर भै ।
नरचोलाको आखिर तक पनि सुखानुभूति क्यै नहुंदै ॥
(२) ऋणको बोझ छ, कष्ट र झञ्झट, झगड़ा, रोग र व्याधि ।
मजदूरीको मोल न मिल्दा, उनको खिन्छ समाधि ॥
महल बनेनन् झुपड़ीहरूती, भोका-भोकै मर्न गए ।
युवक गवैया, भावुक कविजी, पनी त्यसैमा पर्न गए ॥
(३) जीर्ण छ तन, औ देह छ नाङ्गो, घाउ र खटिराबाट रगत
चुही रहेको, कञ्चट करले थाम्दै आयो कोहि पथिक ॥
विषम कष्टको पथ तप गर्दा प्रौढ़ युवा झैं देखियको ।
ज्योतिषिहरूले अलिकति भन्नन्, उसको शिरमा लेखियको ।
(४) को हो? अझि त्यो, कसरी आयो ? जान्छ कतातिर फेरि अब ?
कति दिन रहला कुन तिर जाला जानुपरेपछि पथिक जब ॥
आउँछ ज्वर औ लाग्दछ खोकी कहिले चल्दछ गानो ।
विपद खुंडाले मांस काटने केवल पथिक अजानो ॥

# नजाँउ

ऋतुराज उपाध्याय दाहाल
पूर्व २ नं० रामपुर

नजाँउ साथी स्वदेश छोडेर मातृ भूले विलाप गर्नेछन्
आफ्नै देशको ढिंडो-रोटो साग, सिस्नु खाँउला
आफ्नै देशका खस्रा-खस्रा लुगाहरू लाउला
आफ्नै देशमा स्कूल कारखाना खोली दिउला
मातृ भू को इच्छा हामी पूर्ण गराई दिउँला
न जाउ साथी ...............................
हाम्रै देशमा सुन खानि ताँमा खानि मिल्छन
यो देखेर विदेशीले लामो जिम्रो फिक्छन
आफ्नु देशमा अर्कै आइ मजा उड़ाइ लिने
हामी भने विदेशमा अब किन जाने
न जाँउ साथी ...............................
कोइ साथी इङ्गलैण्ड मा कोइ मलायोमा
वीर बनी लडेको छन् नाम आफ्नु राख्न
कतिलेता स्वाहा गर्छन आफ्नु जीवन पनि
रून लागिन हाम्री आँमा न जाउ विदेश भनि
न जाउँ साथी स्वदेश छोडेर मातृ भूले विलाप गर्नेछन् ।

# देश सेवक वनौं

मित्र प्रसाद खंसील
प. १ नं. धा. ई. निगाल्पानी

भेद भाव अनि स्वार्थ त्यजेर
कृत्य आफ्नु मनमा न भुले र

भाइ भाइ सब हामी मिलेर
देश सेवक वनौंन डटेर।

विश्व आज कति माथि पुगेछ
यत्ति मात्र पशुता नलिएर
लौन लौ अब स्वदेश बसेर। देश ............

बुद्धिमा बलमा प्रतिभामा
मातृ भूमि प्रतिको प्रियता मा
छौंन हामी सबमा कम हेर। देश ............

शीर विश्व भरमा न झुकाउँ
उन्नति पथ विशे मन लाउँ
मातृ भूमि सगको दुःख हेर। देश ............

आज विश्व भरमा अति व्यापि
भै रहेको तिन अर्त्तर माथी
त्यस्को सार्थक गरौन मिलेर। देश सेवक वनौंन डटेर

## युवक प्रति

गणेश प्रसाद पोखरेल
( पूर्व ३ नं० खार्पा )

अब देश वनाउन साथी दीपक झैं झलल पारेर

एक मत भई कन भाई–भाई भई,
देशोन्नति गर्न–लाई सहयोग भई।

ईर्ष्या-द्वेष दूखर पारी स्वार्थ पना छोड़ी,
देश सेवा गरौं अब रुढी-वाद तोडी॥
अब देश बनाउ साथी ............

आफू मात्र वाठो वनि शोषक जस्तो भईं,
गरीब वर्ग न सताऊ दुःख धेर दिई।
तन, मन दिई कन देश सेवा गरौं,
सेवा गर्दा गर्दै वरू मर्न तयार परौं
अब देश वनाउन साथी ..............................
दुष्ट वानि सवै त्यागी राम्रो वानि लिउँ
अरु पनि राम्रो वन्ने युक्ति सिकाई दिउँ
अब साथी उठौन चाँडो आफ्नु देशलाई ऊलल पारेर ॥३॥

## शुभकामना

खेमरञ्जन उपाध्याय भट्टराई
पूर्व ३ नं० लहँमि डाँडा

हिन्दू राज्य भएर गौरव ठुलो आफ्नो सधैं राखने,
वैरीलाई वशै गरेर वलले धेरै उधो झाकने।
प्यारा मीत–संगै मिलेर रहने वीरत्व क्षी विश्वमा,
पैल्यै देखि ठुलोछ देश बुझ्र यो नेपाल संसारमा ॥ १॥
नेपाली क्षमता र आदर ठुलो मीठो छ है मीतमा,
नेपाली ममता अतीव भरिलो साहित्य संगीतमा।
देखाई यसतै निजी मतहरू निष्पक्ष साँचो भई,
सेवा गर्न सकोस् स्वदेश भरको आशा र खाँचोहरी ॥२॥
आफ्नै संस्कृति सभ्यता र समतालाई लिई काँधमा,
भाषा आफ्नु छिटै फिजाउन सकोस् संसारका सामुमा।
नेपाली जनकै अमूल्य महिमा यो विश्वमा उज्वल,
गाई बाँचि रहोस् सदैव सुखले हाँसेर "विश्व-शिखा" ॥३॥

# दुःख पुकार

टीका प्रसाद भट्टराई ( लाहान् गोठ सप्तरी )

हे देश वासी ! दाजुर भाइ हे दिदी वहिनी !
ठगियौं सारै यो देखि मैले कतिदिन काटौंनी ॥
नाग्लोर डोको खकन भिरी टेकुवा लाएर,
बाटामा हिंड्छौं दुःखलाई सम्झि पसीना पुछेर ॥ १ ॥
म सस्तो दिन्छु लौ लेउ भन्दै खुब् पाल्सी पारेर
मितेरी समेत लाएर ठग्छन् अंजान भेटेर ॥
किन्मेल गरी हिड्देछौं घर धर्धरी रोएर,
दुःखी को दुःख नाशहोस् भनि गर्दछु पुकार ॥२॥
बजार् मा जति मालनै विक्छन् तिन्कोमोल तोकेर ।
राखियोस् लिष्ट बाहिर पट्टी देखिने गरेर।
सरकार वाट इन्ती जाम यस्को भट्टै नै भैदिए ।
मनासिव नाफा निर्धारित गर्ने व्यवस्था भैदिए ॥३॥
व्यापार छोड्थे ठगाहा जति खुश हुन्थे सवैजन।
यो मेरो दुःख पुकार सुन्थे सवैले लगाई मन् ॥

## ॥ नमः श्री सूर्यनारायणाय ॥

### सूर्यस्तोत्र

लेखक पं० दधिराम शर्मा मराशिनी गुल्लीखिदीमपश्चिम नेपाल

श्री सूर्यनारायण देवदेव ? राखी दयानाथ ? अवश्यमेव ॥
छुटाइसंन्तापहटाइपाप, गर्नू हवसदास्कनशुद्ध साफ ॥ १ ॥
सुनिन्छ नीमै अरुदेवकोफगत्, श्रीसूर्यकोदर्शनतासवै जगत् ॥
गरी रहेको छ छलिन्नबालक, अबोधगोपालपधेरनीतक ॥ २ ॥

चढाउँदैजो जलपुष्पचन्दन् , श्रीसूर्यकोगर्दछ नित्यवन्दन ।।
सुखीचिरायूरधनीवनी कन त्यो अन्त्यमामिल्दछ सूर्यमैजनी ॥ ३ ॥
खान्ध्योहिजो सँधढिकैमनी भात्, गायत्रिलेआजदिइनठुलोजात्
यस्ती इजस्की जननी छँदैछन्, दुःखीतिनै विप्रसधैर हन्छन् ॥ ४ ॥
कराउँदा घाँटिचिरिन्छ योवरु. लिदैनकोही इकुरामकेगरु ॥
वेदान्तिवावाद्विजछन्सवै, तर गायत्रिजीमारति छैन आदर ॥ ५ ॥
गायत्रिहुन वाचक, वाच्यभास्कर, अभेदई वाचक वाच्यकोछर ॥
इनीदुवैएकस्वरूपहुन्भनी, उपासनामैंकटिकस्तछन् मुनि ॥ ६ ॥
वाच्यार्थ जीने पछितासरासर जानिन्छलक्ष्यार्थकतीकठिन्छर ॥
सोभोसजीलोयहिमार्गत्यागियो, संसारभाडीतिरघुम्नलागियो॥ ७॥
गायत्रिसेवा नगरेपछीहुन समातशकथ्यो अरूकर्मता छन ॥
गायत्रिसंध्याद्विजवृत्तकाजरा गडेत्यहीतीदणकुतर्क वन्चरा ॥ ८ ॥

## आत्माको छाहारीबाट

जब वनमा आगो लाग्छ, वन रुन्छ धुरु धुरु ।
जसलाई ग्रीष्मको उग्र भयङ्कर गर्मीबाट बचाउँछु,
बेघरको घर छुँ तर पनि हाय ! मेरो फेदमा वसी
मलाइ चिरदछन् डढाउँ छन् ।
मेरो सृष्टि आफ्नो निमित्त भएको हैन भन्ने मलाई
छाहा छैन किन कि कतिपय त्यसै सुकेका छन् ।
रातो, सेतो, पहेलो र हरियो आदि भेदले गर्दा म उन्नत हुन
सकेको छैन
तर कविलाई कामर्णदिदै हाई-हाई प्रदान गरेको छु ।
अल्क को प्रयत्न गर्नु भन्दा डाह अथवा प्रशंसामात्र गर्दछु

मेरो राज्य शान्तिको वुटी हो ।
मेरो जातिको नाशमा नै आफ्नो कल्याण सम्झी
विनाशकारीहरू प्रहार गर्दछन्
तर ती प्रति म प्रत्युत्तर दिन्न,
वरू सुगन्धको भारी बोकाई पठाउँछु
जसद्वारा सारा संसार सुगन्धमय बन्दछ
तर तिनी हरूका निमित्त निउँ ।
मेरो सोझो रूपमा वेर्ने लहरो पनि आफूलाई
आवश्यकीयको निषेध सम्झदैंन ।
मेरो जातिमा आज भन्दा अघि
यस्ताको सृष्टि भएको थियो जस्ले
जनहितको अमोघ अस्त्रको प्रहारमा
आफ्नो सास फुक्यो तर हाय !
कोपिला लगेता पनि फुल्नै न पाइ,
कुनै मूर्खले फेदैमा काटि दियो ।
क्यै समय अन्धकार जस्तो भयो
फेरि टुसायो, यसैले आफ्नो राज्यमा
पूर्ण हरियाली देखाउन न सकेता पनि
आफ्नो रूप देखाई खडा भई रहेछु

लेखक—

शेषरमण खनाल
प० ३ नं० तन्हौं सिंपानी (नेपाल)

# तीन मुक्तक

## रोहिणी विलास 'गाउँले'

तिमी किन यसरी लत्रियौलता
किरूखले छेउ दियेन ?
कि यसरी कुल्चने सबले
आफैं उठ अब रुख उडीयेन ।
ए चम्किने ताराहो ! अलिचम्क,
पूर्णिमा पछि पनि औंसी न आओस ।
कठै ? रूख संग-सगै
चरी, विचरी भस्म भई
विराट नगर

देवकोटा ज्यूका कविता सागरबाट
हातका मैला सुनका थैला के गर्नु घनले ?
सागर सिस्नु खापको वेश आनन्दी मनले ।

# विश्व-शिखाचिरायुहोस्

## पद्मप्रसाद शर्मा (पूर्व ४ नं० कटुंजे)

सानु भन्दा धर्ति सानु छात्रैकत्व गरीकन ।
बनेको क्षत्रियो उज्ज्वल देश पार्न भनिकन ॥
नेपालका कुना कानि प्रवेश अविलम्ब होस् ।
जागृति जनमा गर्दै विश्व-शिखा चिरायुहोस् ॥
चोरिर घूस खोरिको निर्मूल पार्दै अघि बढेस्
अत्याचार अनाचार जन विद्रोह नाश गरेस् ।
कुकृत्य धनीका घर्मा धेरै दिन बसि रहोस् ॥
जागृति सूचना देलौ विश्व-शिखा चिरायुहोस् ॥ ४ ॥
एकत्व जनमा लद्दै बढ्न कोशिस् अधिगरेस ।
विच्मरेर गरेस् काम नहोस धोका अनि भरे ॥ ५ ॥

देशमा कतिछन् दुष्ट गरीव मारा र पापीको ।
मुटुको रक्त चुसेर विश्व-शिखा चिरायुहोस् ॥ ६ ॥
बाल विवाह साटांको ध्वंशतैले गरि दिनु
बालाछन् विधवा सारा विलाप तिन्को सुनि लिनु ॥ ७ ॥
अशिक्षित वर्गमा तैले शिक्षाको सूचना दिनु ।
गर्छु भनि लगनको जिभ्रो तैले झिकी लिनु ॥ ८ ॥
जागृति जनमा गर्दै विश्वशिखा चिरायु होस्

श्री मती शान्ताअधिकारी
तीन पैनी विराटनगर

## ( नारी हामी बढौं )

नामैं हाम्रो नारी अवला,
हाँमी पछि गर्न के सकौंला ।
भन्ने भावना हाँमी न लिऊ,
उन्ति पथमा पयर उचालौं ॥ १ ॥
पैलेकाती नारीहरुमा,
थियो धेरै संकुचित भावना ।
अव हाँमी क्यै शिक्षित वन्यौ,
वढौं अगाड़ी उन्नति पथमा ॥ २ ॥
मनुष्यको त्यो मनुष्यतामा,
आजको विज्ञान संसारमा ।
स्त्री पुरुषको समानतामा,
वढौं अगाड़ी उन्नति पथमा ॥ ३ ॥
अधिकार जतिछन् पुरुष हरूमा,
उतिनै हाँमी नारीहरूमा ।
भन्ने भावना राखी मनमा,
वढौं अगाड़ी उन्नति पथमा ॥ ४ ॥

# भावुक बसन्त

हरिहर सद्‌भालय ( रङ्गेली विराट नगर नेपाल )

म उच्च औ नीच उहो भनि वृथा
दुर्भावना-वृत्ति हटाउने प्रथा।
चलाउने भौतिक वादकै सरी
लिएर जातीय विजाति पद्धति ॥ १ ॥

वसन्तको धर्म प्रसार खुबभो
प्रचारको लक्ष्य छ साम्यवादको।
खुशामदी कै दलको गुहार झैं
सुनिन्छ नाना बिरही पुकारनै ॥ २ ॥

फूलेर सालादि अनेक पादप
कोईली वन्यो गीत सुचारु गायक।
थरी-थरी फूल फुलेर बागमा
अली-अलि व्यस्तछ पुष्प-रागमा ॥ ३ ॥

नाँचेलता बाँस बजे जहिं तहीं
विज्ञान का वाद्य र नर्त्तकी सरी।
जता सुकै मङ्गल गीत गौरव
मनाउदा छन् भ्रमरा चरा सब ॥ ४ ॥

समीर मीठो छरदोछ वासना
नकाव्यको केही कमीछ साधन।
अनङ्गको भो अति भव्य आदर
आदर्शको हुन्छै कहाँ अनादर ॥ ५ ॥

## बसन्त

कृष्णप्रसाद अधिकारी सप्तरी सीतापुर नेपाल

शिशिरका सब शीकर दूर गये,
शिकर वञ्चित पक्षि खुशी भये।
सवनका विचका अवनी महा,
मयूर छन् खुशि साथ सुखी त्यहाँ ॥ १ ॥

कहिं छु षट्पद कोकिल कूजित,
कहिं छ रम्य अलौकिक शोभित।
अति मनोहर सुन्दर दृश्यमा,
चकित छन् सब जन् पृथिवी महाँ

अवनीका बीचका का तरुवर महाँ,
किरण झल्कि रहेछ जहाँ तहाँ।
कुसुमको परिमल लिई घ्राण लैं,
मनुजका मन माफिक मोजले ॥ ३ ॥

हरिणीका सरि तुल्य कटाक्षले,
युवतीका गति झैं अति मन्दले।
घुमीरहेछन मोजलिई जहाँ,
गुण सजाई वसेकी क्षिती महाँ ॥ ४ ॥

---

## हाँमी जागौं

देवी प्रसाद काफ्ले पूर्व ३ नं० पंचन्

अब हाँमी जागौंन साथी उन्नतिको पद्धति लिएर
नेपाल मा अति ठूलो उन्नतिको खानी
गरौं अब पराक्रम आफ्नु देश जानी
सबै जना जंमा भई जन्म भूमिलाई
आलस्य लाई त्याग गरी एकत्रित भई ॥ १ ॥
अब हाँमी जागौन ------
पैले पैले नेपालमा शिक्षा कम्ति हुंदा
विदेशमा जानु पर्थ्यो शिक्षा ग्रहण गर्दा
आज देख्छौं हामीहरू हाम्रै नेपालमा
विकसित हुन लाग्यो कुना कानि महाँ।
अब हाँमी जागौंन -------
साना ठूला सबै जाति स्वदेशैमावसी
चित्त दिइँ विकासमा दरो कम्मर कसी
हाँमी पनि स्वदेशी हौं स्वदेशैमी राम्रो
हृदयको कालो मैलो फालि दिउ हाम्रो
अब हामी जागौन-------- ॥ ३ ॥

## उठौं

श्री मति मोहन कुमारी देवी रेग्मी
पू. ३ नं. रावा कुमिण्डे

अये ! भाइ दैजी छिटैलौ उठर
त्यजी न द अज्ञान को सब जुटेर
लिइ भव्य रूमे ज्ञान साहित्य वत्ति
चुडाँउन नेत्र का रूढि पट्टि

॥ १ ॥

उठेगाउँ घर्मा सवै इष्ट मित्र
सवै व्यस्त छन् काममा यत्र तत्र
वढारे सिगारे सवै गेह राम्रो
न ऊठे भरे लाज होला नराम्रो

॥ २ ॥

अघी देखिनै फुर्तिमा नाम पैले
रहे कोछ यो विश्व मा फेरि ऐले
सुते वीर नेपालीको नाम जाला
उठौं लौ उठौं फेर लिइरम्प चाला

## ( हेर )

### लक्ष्मीदेवी वराल

हेर वैनी लोचन खोली प्रकृति ले ल्याएछ विहान।
पाहाडको कन्दरा मा चीवे चरी वास्यो
सेता दाँत देखाएर खिस्स हिमाल् हाँस्यो
छहराको बोलि पारिलहराले हेर
वोलाउन थालि सके पात हल्लाएर हेर वैनी -------
आकाशको कालो वादल पर पर सर्छ
शीत माथि लालि चढ्यो झललल गर्छ
सदेरी मा सुसाएर चीसो हावा आयो
नेपालका निर्माणको पैलो दिनल्यायो हेर वैनी -------
तल्लो घर माथ्लो घर दिदी वैनी हेर
घर पोती ठीक्क परे जान उभो तिर
आकाश मा पौडिएर चन्द्रलोक जाने
विषयमा हुनु हुन्न हाँमिहार खाने हेर वैनी -------

सीताजीका वैनी हाँमि गौतमका चेला
युग हेरी काम गर्ने गर्नु हुन्न ढेरी
सत्य, त्रेता, द्वैन युग निर्माण छ जाने
कार्यभार हाँमिमाछ देश उमो लाने　　　हेर वैनी ........
विलाशका पात्र मात्र होइन संम्भिराख
सुशोभित पारौं हामि नेपालको काख
हात-हात काँध-काँध आज मिलाएर
हेर आँखा हिड्नु पर्छ हुन्न निदाएर

कुरुले
डाडा गाउँ
धनकुठा-नेपाल

## ( व्यथा )

हेमचन्द्र उपाध्याय रेग्मी ( पूर्व ३ नं० राजा कुभिण्डे )

त्यो भव्यको भव्य महाँ मिलाई
　　　साराती दाजु अनि भाई लाई।
अघि बढाई मनको व्यथा जति
　　　मेटेर एकत्र भएर संहति ॥१॥
कहाँ पुगौं लानि कसो गरौंला
　　　अवोधमा ज्ञान कति भरौंला।
भन्ने ती आशा मनका व्यथाले
　　　पार्‍यौ र भस्मै अति दिक् हुँनाले ॥२॥
आएन के गर्नु कसै गरेर
　　　व्यथा अनौठो, मनमा परेर।
यो शोकले क्षीण भई विलायो
　　　लागेन क्यै सीपकसै डरायो ॥३॥

+ + +

# स्पानु कुरा परिवार को रिपोर्ट्

**भवकृष्ण शास्त्री ढकाल**

भर्खर मैंतालु आए की दुलही जस्तै राम्रो बोल्न पनि न जान्ने लाजले मुख छोपेर अलो-अलि मुस्काउन चाहे भैं इ पनि आफ्नु भाव प्रगट गर्न चाहन्छन। नौलो देखेर कसैले पनि मन पराउने छैनन्। वाङ्ग, टिङ्गा खुट्टा लगाएर लंस्प्राङ्ग् लुम्लुङ्ग् गर्दै न जानिदो गरि वामें सर्दै खित् खित् खिस्का छोडेर नौली दुलही ले आफ्नु मुख उघार्नचाहे जस्तै इपनि नयाँ टुसो हाल्न खोज्द छन् हामीले इनलाइ हर तरहवाट सहायता गरेर योनयाँ युगमा इनको टुसो पलाउन दिंउ भन्ने सबै संग प्रार्थना छ। अवर हो नामाकरण नामाकरणका वारे मा हामी ले वहुतै सोच विचार गरेका हौं संसार मा कति २ नाम थिए होलान। हाँमी पनि के राखौं के भनेर अल मल्ल परिरहेका थियौं। धेरै अचलीथ सथिहरु का सहयोग ले हाम्रो नेपाली भाषामा 'सगर' भने को आकाश र माथा भने को शीर भैंनि हाम्रा साहित्य कार हुरुले पनि व्याखथा गरे को देखिन्छ र हामीहरु पनि अघि गाइ, वाखा चराउदा अग्लो शिखर देख्द थ्यौं। यो केहो भनेर सो ददा सगरमाथा हो भनेर भन्द थे। आश्चर्य लाग्दथ्यो। इनैं सगरमाथा का काखमा दगिडवियो, गट्टी खेलेर हुर्के का धार्मा हरइन को नाम कहाँ प्रस्तुत गर्न पाँउला भनेर विचार गरि राखेका थियौं। आज पत्रिका का रुपमा सगरमाथा दर्शाउन पाँउदा हर्षमा मग्न थियौं तर सनातन धर्म का पोषक हामीहरु ले स्मृति हरुमा पनि नेपाल लाइ शिर बताएका हुनाले "सगरमाथा" को व्याख्या यसप्रकार गर्यौं सारा विश्वको शिर नेपाल त्यस्को शिखा सगरमाथा त्यसकारणले (यस परिवारले) या हामी हरुले इन्को नाम विश्व-शिखा रख्यौं हाम्री आमा को यो दाहिने पट्टी को काख जस्तो लाग्दछ। हाम्री आमाका काखमा नाचे का डाँफे, कोइली न्याउली को शब्द अघि हामीहरु गोठा लो गर्दा पनि गुञ्जायमान सुन्द थ्यौं आज पनि नाम मा लागे को वादि तेस्तै गुञ्जायमान होला भनेर हामीहरु

ले इनको नाम विश्व शिखो राखेका हौं अब कतिपय पाठक वर्ग हरुलाई मन पर्नें छैन केतिलें मुख बंटाने छन तर हाम्री हरुलाइ कसैं सँग्र पौठे जोरी खेल्नु छैन । सनातन धर्म का पोषक हामीहरु भार मा सबै एकै होता पनि दुवो उत्तम भनेर गणेश जीलाइ चढाँउ छौं । पाति सबै एकै होता पनि बेल पाति उत्तम भनेर शिवजी लाइ चढाँउ छौ । गौरी शंकर को आवासगृह सर्वोत्तम हो भनि हामीहरुले यो नाम प्रस्तुत गरेका हौं ।

अब यहाँ भन्नुता केही पनि छैन तर न भक्ति पनि नहुने मोही माग्न आएर ढुंग्रो लुकाएर केही जित्नु छैन । यस्को जन्म किन भोर यस्ता संस्ताहरु किन खोलिन्छन् भन्ने कुराता स्वयं सिद्ध छ । किन की आज का युग को कुनै पनि व्यक्ति पैलेका भैं दियालाको उज्यालो मा रहन चाहन्न सक भरता विजुली को प्रकाश खोज्ला न भए पनि लाल्टेन को प्रकाश ता अवश्यैं खोल्द छ । अत: प्रत्येक मनुष्यलाइ युगानुकूल चल्नै करैं लाग्छ र चल्दछ पनि । युग को प्रवाह लाइ कसैले जवर जस्ती रोकेर रोकिन्न । संसारमा ठूला-ठूला घटना, र महान कार्य हुँदै पनि युग को माग अनुसार भैं रहन्छन यदि युगको माग लाइ स्वीकार न गर्ने हो भने ठूलो अनर्थ हुन्छ र यत्र-तत्र-सर्वत्र भै राखेको पनि छ । युगको माँग ले नै विदेह जनक सती साध्वी सीता; विदुषी मैत्रीयी, गार्गयी, महात्मा वुद्ध, पृथ्वी नारायण शाहैं, भीम सेन थापा, जंग वहादुर श्री ५ त्रिभुवन आदि ले युगानुकूल समयोचित् कार्य गर्न वाध्य भए का हुन् । यहाँ अत्र यत्ति भन्नु छ कि आज को राष्ट्रिय जागरण काल मा मुखलुकाएर वस्तु भन्दा समयोऽनुकूल समाजिक स्थिति क्यै दर्शाउन सकिन्छ कि भनेर यस्को जन्म भएको हो कि भने कल्पना गर्न सकिन्छ किन भने राष्ट्रिय आकांक्षा मिमील हुन्छन तापनि क्यै कुरा को पूर्ति यस्ले पनि गर्न सक्ला ।

हाम्रो देश सुहोदा विकाश गर्न का निमित्त यस्को जन्म भो कि भन्ने पनि सोचन सकिन्छ । अर्को कुरा यदि आज हाँमी ले नेपाली साहित्यको जड वलियो न वनाउने हो भने हाम्रो साहित्य हास्यास्पद पुग्ने छ त्यस्ः कारण ले नेपाली साहित्यको जड वलीयोवनाउनु छ । तेस्कै निम्ति हाम्रा

जाजु भाइ हरुले जिल्ला-जिल्ला वारट अध्ययन मण्डल खोलेटर साहित्य सेवा गर्दै हुनु हुन्छ। नेपाली साहित्य को जड़ बनाउन नै यस्को पनि जिल्ला वार नं भएर अञ्चललाइ अगालेर जन्म भएको हो कि भन्ने तर्कना गर्न सकिन्छ कविको काल्पनिक वर्णन नै कविता को सारहो भनेर भन्निपनि सकिने थियो तर प्रथम प्रयास भएको हुनाले आफ्नु रुप धारण गर्न न सकेता पनि विश्वास छ अवश्य आफ्नुरुप धारण गर्नेँ छ

अव तपाँजी हरुलाइ फिजो लाग्न थाल्यो होला अलि कति यस्का कार्यहरु न जर्गदिनुस्।

४–९–६३ का दिन अञ्चलीय साथी हरुका प्रेरणा ले यस्को जन्म भो रयसले साप्ताहिक वाद-विवाद र व्याख्यान आदि चलायो।

"प्रो० डिल्लिराम तिम्सिना ज्यू का अध्यक्षता मा आचार्य पूर्ण चन्द्र ढुगले ज्यूँका प्रधान आतिथ्यमा पं० केशव शर्मा वाँस्तोला, डा० गोविन्द कविराज आदि विद्वान तथा छात्र, अतिथि सिहरुका विशाल जम घट मा उद्घाटन गरायो। वाद-विवाद प्रतियोगितार व्याख्यान प्रतियोगितामा प्रथम द्वितीय आपेका प्रतियोगी हरुलाइ अध्यक्षद्वारा पुरस्कार वितरण गरायो सगरमाथा अञ्चल ने० छात्र परिवार वाराणसी को कविता सँगालो "विश्व-शिखा" लाई तपाँत्री हरु सँगभेट गर्न रसिलो, खस्रो तीतो, एवं गुलीयो साहित्य सामाग्री कोसेली लिएर भेट गर्न पठाउँदैछ एक पल्ट अवश्य भेट गनु हुने छ। जय नेपाल

## यस परिवारमा चन्दा दिने दाता हरुको नाम यस प्रकार छ-

| | भा. रु. | ने. रु. | | भा. रु. | ने. रु. |
|---|---|---|---|---|---|
| पं० केशव प्रसाद शर्मा | २ | | देवेन्द्र प्रसाद शर्मा | १ | |
| आ० पूर्णचन्द्र ढंगेल | १० | | मोहन रामजी शास्त्री | १ | |
| टीका प्रसाद भट्टराई | ५ | | पं० कुल प्रसाद ढकाल | १ | |
| पशुपति प्रसाद निरौला | ५ | | लावण्य कुमार चापागाइ | २ | |
| | | | मुक्तिनाथ पौडेल | १ | |

| | | | |
|---|---|---|---|
| कृष्णा कुमारी देवी | २ | खगेश्वर शास्त्री | १ |
| कृष्ण बहादुर गुरुं | ५ | रामहरि शर्मा | १ |
| जमादार दिल वहादुर | २ | हीरा प्रसाद शर्मा | १ |
| ह. चन्द्रवहादुर गुरुं | २ | जम्मा चन्दा | ४८॥≡) |
| प्रकाशानन्द स्वामी | १ | हामीहरु बाट | ८४) |
| पुरूषोत्तम भटरा इ | १ | जम्मा टोटल | १३२॥=) |
| अग्निप्रसाद अधिकारी | १ | खर्च | १८१) |
| राजेन्द्र प्रसाद घेडाले | १ | | |
| रंगलाल उपाध्याय | १ | | |
| सुर्यनाथ शर्मा | १ | | |

## यसपालीका कार्य कारिणिका सदस्य हरूको

नाम यसप्रकार छ—

अध्यक्ष—विष्णुप्रसाद उपाध्याय ढुंगाना

उपाध्यक्ष—गरीश प्रसाद पोखेल

महामन्त्री –भवकृष्ण शास्त्री ढकाल

मन्त्री—गोपाल प्रसाद सुवेदी

साहित्य मन्त्री—गौरी प्रसाद उपाध्याय रेग्मी

अर्थ मन्त्री—कृष्ण प्रसाद अधिकारी

संगटन मन्त्री—पद्म प्रसाद रेग्मी

प्रचार मन्त्री—कृष्णहरि उपाध्याय नेपाल

प्रधान सदस्य—बोधराज काफ्ले

# सम्पादकीय

मनुष्य का लागि जन्म देखि लिएर अन्त्य सम्म साहित्यको आवश्यकता पर्दछ, साहित्य न हुनु हो भने बोल्न खान हिंड्न इत्यादि सबै कामना मनुष्यनिष्क्रिय हुन्छ, अतएव साहित्यलाई मनुष्यत्व दाता भन्न पर्यो-अत्युक्ति छैन- मनुष्य का अन्तरात्मा देखि कलात्मक ढङ्गले प्रस्फुटित भएर निस्कएको भावना नै साहित्य हो। अनादि काल देखिनै साहित्यले मनुष्य लाई मनुष्यत्व प्रदान गर्दै आएको छ र मनुष्य को पनि कर्तव्य हुँन आउँछ, कि, जसरि पनि साहित्यको, उत्थान गर्न कटि वद्ध हुनु। यस कुरालाई ख्याल राख्दै यस वर्ष हाम्रो सगरमाथा अञ्चल पनि सहृद मान्य व्यक्तिहरु र अन्य साथी हरुका समेत हृदय रसले सिञ्चित भएर यो अङ्कुरो देखाहा पर्न आएको छ। पहिले देखिनै हाम्रो भावना थियो कि यो रसिलो चहकिलो चम्कीलो होस्, त्यसै कारण यसको नाम करण को लागि निकै छान विन गर्नु पर्यो। चन्द्रमा मा अमृत रस को कल्पना गरेर पैले "चन्द्रोदय" यसको नाम करण गर्ने विचार गरीयो, त्यसो हुँदा हाँमीले कल्पना गरेका अरू आदर्श दुईटा हल्का भएर आकाश मा घुम्ने चन्द्रमाले दिन न सक्ने देखियो तत्पश्चात् सगरमाथा भनेर नक्षत्रको द्वितीय चरणमा आईयो तर त्यो पनि अघि एक पल्ट जन्म भएर अल्प वर्ष [illegible] वशेष भएको हुँदा असुभ सूचीक ठहयो अतः नक्षत्र का तृतीय चरण मा आएर चन्द्रमा बाट अमृत सरगमाथा बाट उच्च आदर्श खिचेर साथमा लियी यस्को "विश्व-शिखा" दीर्घायु नाम राखि [illegible] भरखर पलाएको विश्व शिखा को टुसो छिटैनै फुल्नु समर्थ हुंन सक्ने कारण एक मात्र सज्जन हरुका हृदय सरिता का कविता-जलको सेचन् र बिच-बिच मा बाधक भएर उम्रीएका झार हरूलाई गोड्न का लागि सूचना नै हुँने छ भविष्य मा भिन्न अग्नि रहे का शमिका वृक्षले तुल्य कविता-कानन मा सार गर्भित भै रहन सकोस्।

अन्त्यमा सज्जन प्रति अनुरोध छ कि यसमुना मा कोही कांटिलो पन भए पनि बालक हरुको पैलीलिखाइ नै बाझिन हुंनाले क्षम्य हुनेछ।

भवदीय :—सम्पादक मण्डल।

# ❀ वसन्तर्तुवर्णनम् ❀

आचार्य पूर्णचन्द्र दुङ्गेल
"सम्मान्य सदस्य" ने० छा० प० वा० प्रधानाचार्य, जनता
महाविद्यालय विजौरी दाङ्ग नेपाल

शतशः खगमञ्जुगुञ्जनै
जितकामा अपि योगवृत्तयः ॥
प्रभवन्ति वसन्तपासिता-
वदकेऽस्मिन्नभवन्ति रागिणः ॥१॥
हिमहारित हार्दशोचकाः
शिशिरोशीर हृता दुराचयः ॥
नितरां द्रुमवर्णदर्शनैः
पुरुषा रोषहता भवन्त्यमी ॥२॥
प्रकृतिः परिवस्थ कुड्मलै-
र्महनीयत्वहनि जायतेऽधुना ॥
कुसुमानि सुमानवन्तिसा
विदधात्येव समानमण्डनैः ॥३॥
भ्रमराः स्मरकाम्यमानया
नलिनीलीनपतत्तृलेखया ॥
पुरुषान् रुतराजिरञ्जनै-
र्वन् त्रिध्यन्ति रसालसङ्गतान् ॥४॥
सुरुचिर कुसुम गन्धं ते समाघ्राय भृङ्गा-
श्चरुणनयन शोभां दर्शयन्त्यत्र नित्यम् ॥
अधिकमधुर हर्षैर्वर्धमानस्वभावा-
नवनगमशीलाः सञ्चरन्ति स्त्रियोऽपि ॥५॥

ने० छा० परिषद वाराणसीको

# "छात्रप्रभा"

(वार्षिक)

उत्कृष्ट सामग्री लिएर आउदैछ। एकचोटि अवश्य भेट्नुस।

---

सगरमाथा अञ्चल ने० छात्र परिवार वाराणसीको कविता सँगामो "विश्व-शिखा" तपाँई हरुसँग भेट् गर्न कोसेली लिएर आए रहेकोछ भेट् गर्न न बिर्सनुस् है? न बिर्सनुस्।

---

प० २ नं० अध्यन मण्डलको "भानु-उदय" दोश्रो अङ्क निकलदैछ सहयोग गर्नोस्

---

निस्कियो, निस्किसक्यो प० १ नं० ने० छात्र समितिको साहित्यिक, कोसेली "नयाँ पाइलो" पढेर लाभ उठाउनु होस्।

---

प० ४ नं० को लक्ष्मीपुस्तकालय लाई सहयोग गर्नुस्।

---

अनन्त प्रिंटिंग प्रेस, भैरोनाथ, वाराणसी।

